# संसदका पदाधिकारी तथा सदस्यहरूको पारिश्रमिक र सुविधा सम्बन्धी ऐन, २०५२

लालमोहर र प्रकाशन मिति

२०५२।१०।१७

२०५२ सालको ऐन नं. ९

## संसदका पदाधिकारी तथा सदस्यहरूको पारिश्रमिक र सुविधा सम्बन्धमा व्यवस्था गर्न बनेको ऐन

**प्रस्तावना** : संसदका पदाधिकारी तथा सदस्यहरूको पारिश्रमिक र सुविधा सम्बन्धमा व्यवस्था गर्न वाञ्छनीय भएकोले,

श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवको शासनकालको चौबीसौं वर्षमा संसदले यो ऐन बनाएको छ ।

१. **संक्षिप्त नाम र प्रारम्भः** (१) यस ऐनको नाम "संसदका पदाधिकारी तथा सदस्यहरूको पारिश्रमिक र सुविधा सम्बन्धी ऐन, २०५२" रहेकोछ ।

(२) यो ऐन तुरुन्त प्रारम्भ हुनेछ ।

२. **परिभाषा**: विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस ऐनमा,-

(क) "सभामुख" भन्नाले प्रतिनिधि सभाको सभामुख सम्झनु पर्छ ।

(ख) "अध्यक्ष" भन्नाले राष्ट्रिय सभाको अध्यक्ष सम्झनु पर्छ ।

(ग) "विपक्षी दलको नेता" भन्नाले देहाय बमोजिमका दलले संसदीय दलको नेताका रूपमा छानेको व्यक्ति सम्झनु पर्छ :-

(१) मन्त्रिपरिषद् गठन गर्ने वा मन्त्रिपरिषद् गठन गर्न समर्थन गर्ने दल बाहेक प्रतिनिधि सभा वा राष्ट्रिय सभामा दश प्रतिशत वा सो भन्दा बढी सदस्यहरू भएको दलहरू मध्ये सबैभन्दा बढी सदस्य भएको दल, वा

(२) प्रतिनिधि सभा वा राष्ट्रिय सभामा दश प्रतिशत वा सो भन्दा बढी सदस्यहरू भएका एक भन्दा बढी दलहरूको बराबर सदस्य भएमा ती दलहरूले पारस्परिक सहमतिको आधारमा आफूमध्येबाट मान्यता दिएको कुनै एक दल, वा

(३) उपखण्ड (२) बमोजिम पारस्परिक सहमति हुन नसके मन्त्रिपरिषद् गठन गर्ने वा मन्त्रिपरिषद् गठन गर्न समर्थन गर्ने दल बाहेकका प्रतिनिधि सभा वा राष्ट्रिय

सभाका सबै भन्दा बढी सदस्यहरूले विपक्षी दलको नेता छान्नको लागि लिखित मन्जुरी गरेको दल, वा

(४) उपखण्ड (३) बमोजिम लिखित मन्जुरी नभएमा वा मन्त्रिपरिषद् गठन गर्ने वा मन्त्रिपरिषद् गठन गर्न समर्थन गर्ने दल बाहेकका प्रतिनिधि सभा वा राष्ट्रिय सभामा दश प्रतिशत वा सो भन्दा बढी सदस्यहरू भएको कुनै पनि दल नभएमा प्रतिनिधि सभा वा राष्ट्रिय सभाको लागि सभामुख वा अध्यक्षले तोकिदिएको दल ।

<u>**स्पष्टीकरण**</u> : कुनै व्यक्ति विपक्षी दलको नेता भइरहेकोमा कुनै कारणबाट कुनै दलको प्रतिनिधि सभा वा राष्ट्रिय सभामा दश प्रतिशत भन्दा बढी सदस्य पुग्न गई सबैभन्दा बढी सदस्य भएको दल बन्न पुगेमा सो दलले आफ्नो संसदीय दलको नेता भनी छानेको व्यक्तिनै विपक्षी दलको नेता हुनेछ ।

(५) यस खण्डको प्रयोजनको लागि सम्बन्धित दल वा सदस्यले उपखण्ड (२) बमोजिमको पारस्परिक सहमति प्रतिनिधि सभा सदस्यको निर्वाचन भएको पहिलो पटक, प्रतिनिधि सभा वा राष्ट्रिय सभाको अधिवेशन बसेको मितिले पन्ध्र दिनभित्र र उपखण्ड (३) बमोजिमको लिखित मन्जुरी पारस्परिक सहमति हुन नसकेको मितिले पन्ध्र दिनभित्र दिनु पर्नेछ ।

(घ) "सत्ता पक्षको नेता" भन्नाले सत्ता पक्षको तर्फबाट राष्ट्रिय सभामा सरकारी कार्य सञ्चालन गर्न प्रधानमन्त्रीद्वारा मनोनीत मन्त्री बाहेकका राष्ट्रिय सभाको कुनै सदस्य सम्झनु पर्छ ।

(ङ) "सत्ता पक्षको मुख्य सचेतक" भन्नाले प्रतिनिधि सभामा बहुमत प्राप्त संसदीय दलको नेताले वा त्यसरी बहुमत प्राप्त गर्ने कुनै दल नभएमा प्रधानमन्त्रीले प्रतिनिधि सभामा सत्ता पक्षको मुख्य सचेतक भई काम गर्न तोकेको सो सभाको सदस्य सम्झनु पर्छ ।

(च) "उपसभामुख" भन्नाले प्रतिनिधि सभाको उपसभामुख सम्झनु पर्छ ।

(छ) "उपाध्यक्ष" भन्नाले राष्ट्रिय सभाको उपाध्यक्ष सम्झनु पर्छ ।

(ज) "विपक्षी दलको प्रमुख सचेतक" भन्नाले विपक्षी दलको नेताले प्रतिनिधि सभामा विपक्षी दलको प्रमुख सचेतक भई काम गर्न तोकेको सो सभाको सदस्य सम्झनु पर्छ ।

(झ) "सत्ता पक्षको सचेतक" भन्नाले प्रतिनिधि सभामा बहुमत प्राप्त संसदीय दलको नेताले वा त्यसरी बहुमत प्राप्त गर्ने कुनै दल नभएमा प्रधानमन्त्रीले प्रतिनिधि सभामा सत्तापक्षको सचेतक भई काम गर्न तोकेको सो सभाको सदस्य सम्झनु पर्छ ।

(ञ) "सभापति" भन्नाले प्रतिनिधि सभा वा राष्ट्रिय सभाको कुनै समितिको सभापति सम्झनु पर्छ ।

(ट) "सदस्य" भन्नाले मन्त्री वा पदाधिकारी बाहेकका प्रतिनिधि सभा वा राष्ट्रिय सभाको सदस्य सम्झनु पर्छ ।

(ठ) "पदाधिकारी" भन्नाले सभामुख, अध्यक्ष, विपक्षी दलको नेता, सत्ता पक्षको नेता, सत्ता पक्षको मुख्य सचेतक, उपसभामुख, उपाध्यक्ष, विपक्षी दलको प्रमुख सचेतक, सत्ता पक्षको सचेतक र सभापति सम्झनु पर्छ ।

(ड) "समिति" भन्नाले प्रतिनिधि सभा वा राष्ट्रिय सभाको कुनै समिति सम्झनु पर्छ र सो शब्दले संसदको दुवै सदनको संयुक्त समितिलाई समेत जनाउँछ ।

३. **पारिश्रमिक** : (१) पदाधिकारी र सदस्यले आफू निर्वाचित वा मनोनयन भएको मितिदेखि अनुसूची- १ मा उल्लेख भए बमोजिमको पारिश्रमिक पाउनेछन् ।

तर यो ऐन प्रारम्भ हुँदाका बखत बहाल रहेका पदाधिकारी र सदस्यले यो ऐन प्रारम्भ भएको मिति देखि मात्र यस दफा बमोजिमको पारिश्रमिक पाउनेछन् ।

(२) कुनै पदाधिकारी वा सदस्यको पदावधि समाप्त नहुँदै निजको मृत्यु भई वा निजले राजीनामा दिई वा प्रतिनिधि सभा विघटन भई निज आफ्नो पदमा कायम नरहेमा त्यस्तो पदाधिकारी वा सदस्यलाई आफ्नो सदस्यता कायम रहेको दिनसम्म पाउने पारिश्रमिकको अतिरिक्त एक महीनाको पारिश्रमिक बराबरको थप रकम दिइनेछ ।

(३) पदाधिकारी वा सदस्यले उपदफा (२) बमोजिम पाउने रकम अवस्था अनुसार निजलाई वा निजले इच्छाएको व्यक्तिलाई दिइनेछ । पदाधिकारी वा सदस्यको मृत्यु भएमा मृत पदाधिकारी वा सदस्यले कसैलाई इच्छाएको रहेनछ वा इच्छाएको व्यक्ति जीवित रहेनछ भने त्यस्तो रकम निजको नजिकको हकवालालाई दिइनेछ ।

(४) योग्यता नपुगेको कारणबाट कुनै पदाधिकारी वा सदस्य आफ्नो पदमा कायम नरहेमा त्यस्तो पदाधिकारी वा सदस्यलाई उपदफा (२) बमोजिमको थप रकम दिइने छैन ।

४. **पदाधिकारी र सदस्यहरूको निमित्त भत्ता** : (१) पदाधिकारी र सदस्यलाई संसदको कुनै सदनको वा कुनै समितिको वा दुवै सदनको संयुक्त बैठकमा भाग लिएको प्रत्येक दिनको निमित्त बैठक भत्ता बापत दुईसय रूपैयाँ दिइनेछ ।

(२) उपदफा (१) बमोजिमको भत्ता देहायको अवधिको लागि पनि दिइनेछ :-

(क) सदनको चालू अधिवेशनको बैठक स्थगित भएको अवधि भर,

(ख) समितिको बैठक स्थगित गरिएमा सो अवधि भर,

(ग) प्रतिनिधि सभा वा राष्ट्रिय सभाको नियमावली बमोजिम पाउने बिदामध्ये स्वीकृत गरिएको बिदाको अवधि भर ।

(३) संसदको कुनै सदन वा कुनै समितिको कुनै बैठकमा भाग लिन पाउने पदाधिकारी वा सदस्यलाई बैठक प्रारम्भ हुनु भन्दा तीन दिन अघिको र बैठक अन्त्य भएको तीन दिन पछि सम्म प्रत्येक दिनको लागि उपदफा (१) बमोजिमको दरले भत्ता दिइनेछ ।

तर सदन वा समितिको बैठकको प्रारम्भमा अनुपस्थित रहेको पदाधिकारी वा सदस्यले उपस्थित भएको दिन भन्दा तीन दिन अघि देखिको मात्र भत्ता पाउनेछ ।

(४) आफ्नो स्थायी वासस्थानबाट संसदको अधिवेशन वा समितिको बैठकमा भाग लिन आउँदा र भाग लिएर आफ्नो वासस्थान फर्कदा पदाधिकारी र सदस्यलाई दफा १२ को उपदफा (१) को खण्ड (ख) बमोजिम पाउने भ्रमण भत्ताको दोब्बर भ्रमण भत्ता दिइनेछ ।

(५) संसदको कुनै सदनको दुई अधिवेशनको बीचको अवधिमा पदाधिकारी वा सदस्यलाई आफू निर्वाचित भएको निर्वाचन क्षेत्र वा आफ्नो बसोबास भएको जिल्लाको भ्रमण गरी वस्तुस्थितिको अध्ययन गर्न एक आर्थिक वर्षमा एक पटक एक महीनाको पारिश्रमिक बराबरको रकम एकमुष्ट दिइनेछ ।

५. **पत्रपत्रिका सुविधा** : पत्रपत्रिका खरिद गर्न पदाधिकारी र सदस्यले अनुसूची-१ मा उल्लेख भए बमोजिमको रकम पाउनेछन् ।

तर कुनै पदाधिकारीले संसद सचिवालयबाट पत्रपत्रिका सम्बन्धी कुनै सुविधा पाएको भए त्यस्तो पदाधिकारीले यस दफा बमोजिमको पत्रपत्रिका सुविधा पाउने छैन ।

६. **भत्ता नपाउने** : (१) यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि कुनै पदाधिकारी वा सदस्य सदनबाट निलम्बित भएमा त्यस्तो निलम्बित अवधिभर र फौज्दारी अभियोगमा अदालतको निर्णय बमोजिम थुनामा वा कैदमा रहेमा त्यसरी थुना वा कैदमा रहेको अधिभरको लागि निजले यस ऐन बमोजिम पाउने कुनै किसिमको भत्ता पाउने छैन ।

(२) सदन र समितिको बैठक एकै दिन बसेकोमा पदाधिकारी र सदस्यले एक दिनको मात्र भत्ता पाउनेछ । सदन र समितिको बैठक बापत छुट्टा छुट्टै भत्ता दिइनेछैन ।

७. **पारिश्रमिक र भत्ताको भुक्तानी** : पदाधिकारी र सदस्यले यस ऐन बमोजिम पाउने पारिश्रमिक र अन्य भत्ता संसद सचिवालयबाट पाउनेछन् ।

तर कुनै पदाधिकारी वा सदस्यले संसद सचिवालयको परामर्शमा कुनै बैंकमा खाता खोली आफूले पाउने पारिश्रमिक र भत्ता सो खातामा जम्मा गरी दिन लिखित सूचना दिएमा संसद सचिवालयले सो रकम त्यस्तो खातामा जम्मा गरी दिनेछ ।

८. **राहदानी सुविधा** : संसदको कामको सिलसिलामा वा नेपालको प्रतिनिधित्व गरी विदेशको भ्रमणमा जाँदा पदाधिकारी र सदस्यलाई कुटनैतिक राहदानी दिइनेछ ।

९. **आवास सुविधा** : (१) पदाधिकारी र सदस्यलाई आवासको निमित्त नेपाल सरकारको तर्फबाट सरकारी घरको बन्दोबस्त गरिनेछ । त्यस्तो घरको बन्दोबस्त नभएकोमा पदाधिकारी र सदस्यलाई अनुसूची-१ मा उल्लेख भए बमोजिमको मासिक रकम आवास सुविधा बापत दिइनेछ ।

(२) उपदफा (१) बमोजिम नेपाल सरकारको तर्फबाट बन्दोबस्त भएको घरको मर्मत र सम्भार नेपाल सरकारले गर्नेछ ।

(३) उपदफा (१) बमोजिम आवास सुविधा बापत रकम उपलब्ध गराइएकोमा पदाधिकारीलाई निजी सचिवालय तथा गार्डघर बन्दोबस्त गर्न अनुसूची-१ मा उल्लेख भए बमोजिमको रकम दिइनेछ ।

(४) पदाधिकारी वा सदस्यले यस दफा बमोजिम पाउने सुविधा आफ्नो पदावधि समाप्त भएको मितिले पन्ध्र दिनसम्म पाउनेछ ।

(५) उपदफा (१) बमोजिम नेपाल सरकारबाट आवास सुविधा बन्दोबस्त नभएमा सदस्यलाई आवासमा फर्निचर सम्बन्धी व्यवस्था गर्नको लागि एक संसद कार्यावधिको निमित्त एकमुष्ट पन्ध्र हजार रूपैयाँ दिइनेछ ।

तर मन्त्री वा पदाधिकारीको हैसियतले एक पटक फर्निचर सम्बन्धी सुविधा पाईसकेको भए निजलाई संसदको एकै कार्यावधि भित्र यस उपदफा बमोजिमको फर्निचर सुविधा दिइने छैन ।

**स्पष्टीकरण**: यो उपदफाको प्रयोजनको लागि “सदस्य” भन्नाले पदाधिकारीलाई समेत जनाउँछ ।

१०. **मोटर तथा इन्धन सुविधा** : (१) प्रत्येक पदाधिकारीलाई मोटर एक र अनुसूची-१ मा उल्लेख भए बमोजिमको सवारी इन्धन र मोबिल उपलब्ध गराइनेछ ।

(२) उपदफा (१) बमोजिम पदाधिकारीले प्राप्त गरेको इन्धन र मोबिलको बिल भौचर बुझाउनु पर्ने छैन ।

(३) पदाधिकारीले यस दफा बमोजिम पाउने मोटर सुविधा आफ्नो पदावधि समाप्त भएको मितिले सात दिन सम्म प्रयोग गर्न सक्नेछ ।

(४) यस दफा बमोजिम पदाधिकारीलाई उपलब्ध गराइएको मोटरको मरमत र सम्भार नेपाल सरकारको तर्फबाट गरिनेछ ।

(५) सवारी सुविधा उपलब्ध नगराइएको सदस्यलाई संसदको कुनै सदनको वा कुनै समितिको वा दुवै सदनको संयुक्त बैठकमा भाग लिएको प्रत्येक दिनको निमित्त सवारी सुविधा बापत पचास रूपैयाँ दिइनेछ ।

११. **बिजुली, धारा र टेलिफोन सुविधा** : (१) सभामुख र अध्यक्षको आवासमा जडान गरिएको विजुली तथा धाराको पूरै महसुल र दुईवटा टेलिफोन लाइन जडान गर्न लाग्ने धरौटी तथा अन्य खर्च र टेलिफोनको पूरै महसुल (जरिवाना बाहेक) नेपाल सरकारले व्यहोर्नेछ ।

(२) सभामुख र अध्यक्ष बाहेक अन्य पदाधिकारी र सदस्यलाई सरकारी घर बन्दोबस्त भएकोमा त्यस्तो घरमा जडान गरिएको बिजुली तथा धाराको पूरै महसुल र सो घरमा एउटा टेलिफोन लाइन जडान गर्न लाग्ने धरौटी तथा अन्य खर्च नेपाल सरकारले व्यहोर्नेछ । टेलिफोन महसुल बापत मासिक चारसय स्थानीय कल र नेपालभित्र मासिक एक घण्टाको एस.टि.डि. कलमा लाग्ने महसुल (जरिवाना बाहेक) को रकम उपलब्ध गराइनेछ ।

(३) सभामुख र अध्यक्ष बाहेक अन्य पदाधिकारी र सदस्यलाई सरकारी घर बन्दोबस्त हुन नसकेमा निज बसेको आवासमा एउटा टेलिफोन लाइन जडान गर्न लाग्ने धरौटी तथा अन्य खर्च नेपाल सरकारले व्यहोर्नेछ । टेलिफोन महसुल बापत मासिक चारसय स्थानीय कलमा लाग्ने महसुल (जरिवाना बाहेक) नेपालभित्र मासिक एक घण्टाको एस.टि.डि. कलमा लाग्ने महसुल (जरिवाना बाहेक) को रकम उपलब्ध गराइनेछ ।

(४) विजुली बापत मासिक दुईसय युनिटको महसुल (जरिवाना बाहेक) को रकम उपलब्ध गराइनेछ ।

(५) पदाधिकारी वा सदस्यको आवास परिवर्तन गर्नु पर्दा टेलिफोन लाइन सार्न लाग्ने जडान खर्च एक संसदकालमा बढीमा दुईपटकको लागि नेपाल सरकारले व्यहोर्नेछ ।

(६) यस दफा बमोजिम टेलिफोन पाउने पदाधिकारी वा सदस्य अयोग्यताको कारणले बाहेक अन्य कुनै कारणले संसदको सदस्य कायम नरहेमा पनि सदस्यता कायम नरहेको मितिले ६ महीनाभित्र निजले चाहेमा उक्त टेलिफोन लाइन जडान गर्दा लागेको धरौटी रकम बुझाई सो टेलिफोन आफ्नो स्वामित्वमा राख्न सक्नेछ ।

१२. **दैनिक तथा भ्रमण भत्ता** : (१) संसदको कामको सिलसिलामा नेपालभित्र भ्रमण गर्दा पदाधिकारी वा सदस्यलाई देहाय बमोजिमको दैनिक तथा भ्रमण भत्ता दिइनेछ :-

(क) दैनिक भत्ता : अनुसूची-१ मा उल्लेख भए बमोजिमको रकम ।

(ख) भ्रमण भत्ता :

(१) पैदल भ्रमण गर्दा अनुसूची-१ मा उल्लेख भए बमोजिमको रकम ।

(२) मोटरबाट भ्रमण गर्दा बिल बमोजिमको इन्धन खर्च ।

तर सभामुख र अध्यक्ष बाहेक अन्य पदाधिकारी वा सदस्यले मोटरबाट भ्रमण गर्नु अघि सभामुख वा अध्यक्षबाट त्यस्तो भ्रमण गर्ने लिखित स्वीकृति लिनु पर्नेछ ।

(३) रेलबाट भ्रमण गर्दा एकजनालाई लाग्ने वातानुकूलित व्यवस्था भएको ठाउँमा वातानुकूलितको र सो नभएकोमा प्रथम श्रेणीको टिकट खर्च र बर्थ रिजर्भ गरेमा सो बापत लागेको खर्च ।

(४) हवाईजहाजबाट भ्रमण गर्दा एक जनालाई लागेको टिकट खर्च ।

(५) अन्य सवारी साधनबाट भ्रमण गर्दा एक जनालाई लाग्ने बिल बमोजिमको खर्च ।

(२) पदाधिकारी, सदस्य र भ्रमणदलमा संलग्न अन्य व्यक्तिलाई संसदको काममा वा नेपालको तर्फबाट कुनै समारोह, उत्सव, सम्मेलन आदिमा भाग लिन नेपालबाहिर भ्रमण गर्दा देहाय बमोजिमको दैनिक तथा भ्रमण भत्ता दिइनेछ :-

(क) दैनिक भत्ता : अनुसूची - २ मा उल्लेख भए बमोजिमको विदेशी मुद्रा ।

तर नेपालबाहिर विदेशी राष्ट्रको अतिथिको रूपमा औपचारिक भ्रमणमा जाँदा पदाधिकारी, सदस्य र भ्रमण दलमा संलग्न अन्य व्यक्तिलाई त्यस्तो राष्ट्रमा रहुन्जेलसम्मको दिनहरूको लागि यस खण्ड बमोजिम पाउने दैनिक भत्ताको आधा रकममात्र दिइनेछ ।

(ख) भ्रमण भत्ता :

(१) मोटरबाट भ्रमण गर्दा बिल वा टिकट बमोजिमको मोटर भाडाको रकम ।

(२) रेलबाट भ्रमण गर्दा एक जनालाई लाग्ने वातानुकूलित व्यवस्था भएको ठाउँमा वातानुकूलितको र सो नभएकोमा प्रथम श्रेणीको टिकट खर्च र बर्थ रिजर्भ गरेमा सो बापत लागेको खर्च ।

(३) हवाईजहाजबाट भ्रमण गर्दा सभामुख वा अध्यक्षलाई एकजनालाई लाग्ने प्रथम श्रेणीको टिकट खर्च र अन्य

पदाधिकारी वा सदस्य र भ्रमण दलमा संलग्न अन्य व्यक्तिलाई एकजनालाई लाग्ने इकोनोमी दर्जाको टिकट खर्च ।

(४) जलमार्गबाट भ्रमण गर्दा एकजनालाई लाग्ने बिल वा टिकट बमोजिमको खर्च ।

(३) पदाधिकारी र सदस्यलाई तीनलाख रूपैयाँको यात्रा बीमा गर्न लाग्ने रकम र हवाई उडान कर बापत लाग्ने रकमको साथै नेपाल अधिराज्यभित्र भ्रमण गर्नु पर्दा प्रत्येक एकतर्फी भ्रमणको लागि एकमुष्ट एकसय रूपैयाँ र नेपालबाहिर भ्रमण गर्नु पर्दा प्रत्येक एकतर्फी भ्रमणको लागि एकमुष्ट पाँचसय रूपैयाँ दिइनेछ ।

**१३.** **नेता भत्ता** : पदाधिकारी वा सदस्यले प्रतिनिधि मण्डलको नेताको रूपमा विदेश जाँदा आफूले पाउने दैनिक भत्ताको पचास प्रतिशत थप रकम नेता भत्ता बापत पाउनेछ ।

**१४.** **निजी सचिवालय र कर्मचारीको व्यवस्था** : (१) आफ्नो कार्यकालभरको निमित्त पदाधिकारी र सदस्यले निजी सचिवालयको लागि अनुसूची-३ मा उल्लेख भए बमोजिमको कर्मचारी सुविधा पाउनेछ ।

(२) पदाधिकारीलाई निजको कार्यकालभरको निमित्त आवश्यक फर्निचर र अनुसूची-३ मा उल्लेख भए बमोजिमका अन्य मालसामानहरू उपलब्ध गराइनेछ । त्यसरी उपलब्ध गराइएको फर्निचर र मालसामानहरू निजले आफ्नो कार्यकाल समाप्त भएपछि फिर्ता बुझाउनु पर्नेछ ।

(३) निजी सचिवालयको लागि मसलन्द तथा अतिथि सत्कारको निमित्त पदाधिकारी र सदस्यलाई अनुसूची-३ मा उल्लेख भए बमोजिमको रकम उपलब्ध गराइनेछ ।

**१५.** **सुरक्षाको व्यवस्था**: पदाधिकारीको सुरक्षाको निमित्त नेपाल सरकारले अनुसूची-३ मा उल्लेख भए बमोजिमको सुरक्षा कर्मचारीको व्यवस्था गर्नेछ ।

**१६.** **उपचारको व्यवस्था**: (१) पदाधिकारी र सदस्यलाई उपचारको निमित्त संसद सचिवालयमा वरिष्ठ चिकित्सकको निःशुल्क सेवा उपलब्ध गराइनेछ ।

(२) अस्पतालमा उपचार गर्नु पर्ने भनी संसद सचिवालयको चिकित्सकले सिफारिस गरेको पदाधिकारी वा सदस्यले अस्पतालमा उपचार गराउँदा लागेको बिल बमोजिमको खर्च संसद सचिवालयले व्यहोर्नेछ ।

तर आकस्मिक अवस्था परी अस्पतालमा भर्ना हुनु परेमा वा उपत्यकाबाहिर रहेको अवस्थामा अस्पताल भर्ना हुनु परेमा त्यस्तो चिकित्सकको सिफारिस आवश्यक पर्ने छैन ।

त्यसरी अस्पताल भर्ना भएको कुरा संसद सचिवालयलाई यथासम्भव छिटो माध्यमद्वारा जानकारी दिनु पर्नेछ ।

१७. **कार्यालय सुविधाः** (१) पदाधिकारीलाई आफ्नो कार्यालय स्थापना गर्न संसद सचिवालयमा कार्यकक्ष उपलब्ध गराइनेछ ।

(२) उपदफा (१) बमोजिम कार्य कक्षमा आवश्यक फर्निचर, टाइपराइटर र टेलिफोन उपलब्ध गराइनेछ ।

१८. **स्थायी वास्स्थान र निर्वाचन क्षेत्र फरक भएमा कुनै एकको सुविधा पाउने** : कुनै पदाधिकारी वा सदस्यको स्थायी वासस्थान भएको क्षेत्र र निज सदस्य निर्वाचित भएको क्षेत्र भिन्ना भिन्नै भएमा दफा ४ को उपदफा (४) बमोजिम निजले पाउने भ्रमण भत्ता ती दुई स्थानमध्ये कुनै एक स्थानबाट आउँदा जाँदा मात्र लिन पाउनेछ ।

१९. **बिल भरपाई इत्यादि पेश गर्नु पर्ने** : (१) भ्रमण भत्ताको भुक्तानीको निमित्त पहिलो पटक अधिवेशनमा आउँदाको हवाईजहाज, रेल र बसको टिकट बापत भएको खर्चको बिल भरपाई र पैदल भ्रमण गरेकोमा आफूले भ्रमण गरेको कोस प्रमाणित गरिएको निस्सा भ्रमण बिलको साथ पेश गर्नु पर्नेछ ।

(२) भ्रमण खर्चमा परिवर्तन नभएसम्म उपदफा (१) बमोजिम एक पटक प्रमाणित बिल भौचर संलग्न भएको दैनिक तथा भ्रमण भत्ताको बिल बराबरको रकम दोस्रो पटकदेखि सदन वा समितिको बैठकमा भाग लिन आउँदा जाँदाको लागि पनि दैनिक तथा भ्रमण भत्ता बापत एकमुष्ट खर्च लेखी सम्बन्धित पदाधिकारी वा सदस्यलाई संसद सचिवालयले उपलब्ध गराउनेछ ।

२०. **दोहोरो पर्ने गरी भ्रमण भत्ता नपाउने** : (१) समितिको बैठक चलिरहेको समयमा सदनको बैठक प्रारम्भ हुने कुराको वा सदनको बैठक चलिरहेको समयमा समितिको बैठक प्रारम्भ हुने कुराको सूचना प्रकाशित भएकोमा सो बमोजिम सदन वा समितिको बैठक प्रारम्भ हुने र चलिरहेको सदन वा समितिको बैठक अन्त्य भएको मिति बीचको अवधि सात दिन भन्दा बढी फरक नभएमा चालू बैठकमा भाग लिइरहेको पदाधिकारी वा सदस्यले पछिबाट प्रारम्भ भएको सदन वा समितिको बैठकको अन्त्य भएपछि मात्र यस ऐन बमोजिमको भ्रमण भत्ताको सुविधा पाउनेछ ।

(२) कुनै पदाधिकारी दुईवटा पदमा मनोनीत वा निर्वाचित भएमा निजले कुनै एक पदको सुविधा मात्र पाउनेछ ।

२१. **अस्थायी समितिको सभापति तथा उपसमितिको संयोजक र सदस्यले पाउने सुविधा** : (१) कुनै खास प्रयोजनका लागि प्रतिनिधि सभा वा राष्ट्रिय सभामा अस्थायी प्रकृतिको कुनै समिति

गठन गरिएमा त्यस्तो समितिको सभापति र सदस्य तथा सो समिति अन्तर्गत गठित उपसमितिको संयोजक र सदस्यले दफा ४ को उपदफा (१) बमोजिमको बैठक भत्ता पाउने छन् ।

(२) उपदफा (१) बमोजिम गठित समितिको सभापतिलाई ड्राईभर सहितको मोटर एक र मासिक एकसय पचास लिटर इन्धन सुविधा दिइनेछ र अन्य सदस्य तथा उपसमितिको संयोजक र सदस्यलाई दफा १० को उपदफा (५) बमोजिम सवारी सुविधा बापत प्रतिदिन पचास रूपैयाँ दिइनेछ ।

२२. **<u>अन्धो र अशक्त पदाधिकारी वा सदस्यलाई विशेष सुविधा</u>** : (१) कुनै पदाधिकारी वा सदस्य अन्धो वा शारीरिक रूपले अशक्त भई हिंडडुल गर्न निजलाई परिचारकको सेवाको आवश्यकता छ भन्ने कुरा सभामुख वा अध्यक्षलाई लागेमा त्यस्तो पदाधिकारी वा सदस्यको साथ रहने एकजना परिचारकलाई उपदफा (२) बमोजिमको सुविधा प्रदान गरिनेछ ।

(२) पदाधिकारी वा सदस्यको साथमा उपदफा (१) बमोजिम रहेको परिचारकलाई देहाय बमोजिमको सुविधा प्राप्त हुनेछ :-

(क) <u>दैनिक भत्ता</u> : पदाधिकारी वा सदस्यले पाउने दैनिक भत्ताको आधा ।

(ख) <u>भ्रमण भत्ता</u> : पदाधिकारी वा सदस्यले भ्रमण गर्दा पाए सरहको सुविधा ।

(ग) <u>लुगा भत्ता</u> : चारहजार रूपैयाँ ।

२३. **<u>पेश्की</u>** : (१) पदाधिकारी वा सदस्यले यस ऐन बमोजिम पाउने पारिश्रमिक र आवास सुविधा बापतको रकम पेश्कीको रूपमा माग गरेमा सोही आर्थिक वर्षभित्र फछ्र्यौट गर्ने गरी बढीमा तीन महीनासम्मको पेश्की पाउन सक्नेछ ।

तर-

(१) कुनै पदाधिकारी वा सदस्यलाई कडा रोग लागी विदेशी अस्पतालमा उपचार गराउनु पर्ने ठहरिएमा वा यस्तै कुनै विशेष परिस्थिति परेको छ भन्ने कुराको औचित्यपूर्ण आधार देखिएमा सभामुख वा अध्यक्षको स्वीकृति लिई संसद सचिवालयले त्यस्तो पदाधिकारी वा सदस्यलाई बढीमा एक वर्षको पारिश्रमिक रकम पेश्की दिन सक्नेछ ।

(२) उपखण्ड (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि बजेटबाट निकासा भएको रकमले नभ्याउने भएमा वा तीन महीना अगावै निजको कार्यकाल समाप्त हुने देखिएमा अवस्था अनुसार पेश्की नदिन वा कम अवधिको लागि मात्र पेश्की दिन सकिनेछ ।

(२) उपदफा (१) बमोजिम दिइएको पेश्की रकम फछ्र्यौट नभएसम्म पदाधिकारी वा सदस्यले पाउने मासिक पारिश्रमिक वा आवास सुविधाको पूरै रकम कट्टा गरी फछ्र्यौट गरिनेछ ।

(३) यस दफा बमोजिम पेश्की लिने पदाधिकारी वा सदस्य कुनै कारणले संसदको सदस्य कायम नरहेमा निजसंग लिन बाँकी रहेको रकम प्रचलित कानून बमोजिम असूल उपर गरिनेछ ।

तर पारिश्रमिक पेश्की लिने कुनै पदाधिकारीको पेश्की फछ्र्यौट हुनु अगावै मृत्यु भएमा निजसित लिन बाँकी रहेको पारिश्रमिक पेश्की रकम मिनाहा हुनेछ ।

२४. **आर्थिक सहायता** : (१) कुनै पदाधिकारी वा सदस्यको पदावधि कायम रहेकै अवस्थामा मृत्यु भएमा नेपाल सरकारले निजको परिवारलाई दुईलाख रूपैयाँ आर्थिक सहायता उपलब्ध गराउनेछ ।

(२) कुनै पदाधिकारी वा सदस्य कुनै कारणबाट शारीरिक वा मानसिक रूपमा अशक्त भई संसद सदस्य रहिरहन असमर्थ भएमा त्यस्तो पदाधिकारी वा सदस्यलाई अशक्तता बापत पचासहजार रूपैयाँ आर्थिक सहायता एकमुष्ट उपलब्ध गराइनेछ ।

२५. **विशेष भत्ता** : (१) नेपाल अधिराज्यको संविधान, २०४७ बमोजिम प्रतिनिधि सभा वा राष्ट्रिय सभामा निर्वाचित वा मनोनीत भई प्रतिनिधि सभा वा राष्ट्रिय सभामा देहाय बमोजिमका कार्यकाल वा पदावधि पूरा गरेका व्यक्तिलाई देहाय बमोजिमको विशेष भत्ता दिइनेछ :-

(क) एक कार्यकाल वा एक पदावधि पूरा गरेकालाई प्रतिमास तत्काल संसद सदस्यले खाई पाई आएको मासिक पारिश्रमिकको ५० प्रतिशत रकम ।

(ख) दुई कार्यकाल वा दुई पदावधि पूरा गरेकालाई प्रतिमास तत्काल संसद सदस्यले खाई पाई आएको मासिक पारिश्रमिकको ६० प्रतिशत रकम ।

(ग) तीन कार्यकाल वा तीन पदावधि वा सो भन्दा बढी कार्यकाल वा पदावधि पूरा गरेकालाई प्रतिमास तत्काल संसद सदस्यले खाई पाई आएको मासिक पारिश्रमिकको ७५ प्रतिशत रकम ।

**स्पष्टीकरण** : यस उपदफाको प्रयोजनको लागि "एक कार्यकाल" भन्नाले प्रतिनिधि सभाको कार्यकाल पूरा नहुँदै नेपाल अधिराज्यको संविधान, २०४७ बमोजिम प्रतिनिधि सभा विघटन वा भंग भएमा पनि सो अवधिलाई एक कार्यकाल पूरा गरेको मानिनेछ ।

(२) उपदफा (१) बमोजिमको भत्ता देहायको अवस्थामा दिइनेछैन :-

(क) भत्ता पाउने व्यक्ति पुनः प्रतिनिधि सभा वा राष्ट्रिय सभामा निर्वाचित वा मनोनीत भई सो पदमा रहेसम्म,

(ख) भत्ता पाउने व्यक्तिले प्रचलित कानून बमोजिम निवृत्तभरण पाएको रहेछ भने निजले त्यस्तो निवृत्तभरण वा यस दफा बमोजिमको भत्ता मध्ये कुनै एक रोज्नु पर्नेछ ।

२६. **अनुसूचीमा हेरफेर गर्न सक्ने** : नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी पदाधिकारी वा सदस्यलाई मर्का नपर्ने किसिमबाट अनुसूचीमा हेरफेर गर्न सक्नेछ ।

२७. **खारेजी**: संसदका केही पदाधिकारीहरूको पारिश्रमिक र सुविधा सम्बन्धी ऐन, २०४८ र संसदका पदाधिकारी तथा सदस्यहरूको पारिश्रमिक र सुविधा सम्बन्धी नियमावली, २०४८ खारेज गरिएका छन् ।

# अनुसूची – १

(दफा ३, ५, ९, १० र १२ सँग सम्बन्धित)

## पदाधिकारी तथा सदस्यले पाउने सुविधा

| क.सं | सुविधाको किसिम | ईकाई दर | सभामुख र अध्यक्ष प्रत्येकलाई | प्रतिनिधि सभामा विपक्षी दलको नेता | राष्ट्रिय सभामा विपक्षी दलको नेता, सत्ता पक्षको नेता, मुख्य सचेतक प्रत्येकलाई | उपसभामुख र उपाध्यक्ष प्रत्येकलाई | विपक्षी दलको प्रमुख सचेतक, सत्ता पक्षको सचेतक र सभापति प्रत्येकलाई | सदस्य प्रत्येकलाई |
|---|---|---|---|---|---|---|---|---|
| ▲१. | ✓पारिश्रमिक | प्रति महिना रु. | १९,०००।- | १७,०००। | १७,०००।- | १६,०००।- | १५,६००।- | १५,२००।- |
| २. | पत्रपत्रिका सुविधा | प्रति महिना रु. | ३००।- | ३००।- | ३००।- | ३००।- | ३००।- | ३००।- |
| ▲३. | आवास सुविधा | प्रति महिना रु. | २५,०००।- | २०,०००।- | ६,५००।- | ६,५००।- | ६,५००।- | ६,५००।- |
| ४. | निजी सचिवालय बन्दोबस्त | प्रति महिना रु. | २,०००।- | १,७५०।- | १,७५०।- | १,७५०।- | १,२००।- | - |
| ५. | गार्डघर | प्रति महिना रु. | २,०००।- | १,७५०।- | - | १७५०।- | - | - |
| ६. | सवारी इन्धन | प्रति महिना लिटर | २५० | २३० | २३० | २०० | १५० | - |
| ७. | मोविल | त्रैमासिक लिटर | १० | ५ | ५ | ५ | ५ | - |
| ८. | दैनिक भत्ता | प्रतिदिन रु. | २००।- | १९०।- | १९०।- | १९०।- | १९०।- | १९०।- |
| ९. | पैदल भ्रमण भत्ता | प्रतिकोष रु. | ३०।- | २५।- | २५।- | २५।- | २५।- | २५।- |



▲ नेपाल सरकारको नेपाल राजपत्रा मिति २०५७।४।१ गते प्रकाशित सूचना अनुसार सोही मितिदेखि लागू हुने गरी अनुसूचीको क्रमसंख्या १ र ३ को सट्टा उल्लेखित क्रमसंख्या १ र ३ राखी पारश्रमिक र आवास सुविधा हेरफेर गरेको ।

✓ अध्यक्ष/सभामुखले बत्तीस हजार चालीस रूपैयाँ, र उपाध्यक्ष/उपसभामुखले अट्ठाईस हजार नौ सय बीस रूपैयाँ, विपक्षी दलको नेता संविधानसभा/व्यवस्थापिका संसदले अट्ठाईस हजार नौ सय बीस रूपैयाँ, मुख्य सचेतक संविधानसभा/व्यवस्थापिका संसदले अट्ठाईस हजार नौ सय बीस रूपैयाँ, विपक्षी दलको प्रमुख सचेतक संविधानसभा/व्यवस्थापिका संसद सत्ताईस हजार तीन सय साठी रूपैयाँ, संविधानसभा/व्यवस्थापिका संसद सत्ता पक्षका सचेतकले सत्ताईस हजार तीन सय साठी रूपैयाँ, संविधानसभा/व्यवस्थापिका संसदका समितिका सभापतिले सत्ताईस हजार तीन सय साठी रूपैयाँ र संविधानसभा/व्यवस्थापिका संसदका सभासदले छब्बिस हजार एक सय दश रूपैयाँ मासिक पारिश्रमिक २०६६।४।१ गते देखि पाउने निर्णय मन्त्रिपरिषद्ले मिति २०६६।५।१७ मा गरेको । यस सम्बन्धी सूचना नेपाल राजपत्रमा प्रकाशन भएको नदेखिएको ।

# अनुसूची - २

(दफा १२ को उपदफा (२) को खण्ड (क) सँग सम्बन्धित)

## विदेश भ्रमण गर्दा पाउने दैनिक भत्ता

| क.सं | पदाधिकारी | जापान, दक्षिण कोरिया, फिलिपिन्स र खाडिका मुलुक बाहेक अन्य सबै एशियाली मुलुकहरूमा यू.एस.डलर (तर भारतको हकमा विदेशी मुद्रा बराबर भारतीय मुद्रामा) | जापान, दक्षिण कोरिया, फिलिपिन्स र खाडिका मुलुक लगायत बाँकी सबै मुलुकहरूमा यु.एस.डलर |
|---|---|---|---|
| १. | सबै पदाधिकारी, सदस्य र भ्रमण दलमा संलग्न व्यक्ति प्रत्येकलाई | १०० | १२५ |

# अनुसूची – ३

(दफा १४ र १५ सँग सम्बन्धित)

## पदाधिकारी तथा सदस्यलाई दिइने अन्य सुविधा

निजी सचिवालय

| क्र.सं | सुविधाको किसिम | ईकाई दर | सभामुख र अध्यक्ष प्रत्येकलाई | प्रतिनिधि सभामा विपक्षी दलको नेता | राष्ट्रिय सभामा विपक्षीदलको नेता, सत्ता पक्षको नेता र सत्ता पक्षको मुख्य सचेतक प्रत्येकलाई | उपसभामुख र उपाध्यक्ष प्रत्येकलाई | विपक्षीदलको प्रमुख सचेतक, सत्ता पक्षको सचेतक र सभापति प्रत्येकलाई | सदस्य प्रत्येकलाई |
|---|---|---|---|---|---|---|---|---|
| १. | स्वकीय सचिव (रा.प.द्वि.)उप सचिव | जना | १ | १ | १ | १ | १ | - |
| २. | स्वकीय सचिव (रा.प.तृ.) शा.अ. | जना | १ | - | - | - | - | १ |
| ३. | कम्प्युटर अप्रेटर (रा.प.अ.प्र.) ना.सु. | जना | १ | - | - | - | - | - |
| ४. | टाईपिष्ट (रा.प.अ.प्र.) ना.सु. | जना | - | १ | १ | १ | - | - |
| ५. | ड्राइभर (रा.प.अ.द्वि.) | जना | २ | २ | २ | २ | २ | - |
| ६. | पियन | जना | २ | २ | १ | १ | १ | - |
| ७. | लेजर प्रिन्टर सहितको कम्प्यूटर | गोटा | १ | - | - | - | - | - |
| ८. | देवनागरी टाईपराईटर | गोटा | - | १ | १ | १ | - | - |
| ९. | अंग्रेजी टाईपराईटर | गोटा | - | १ | १ | १ | - | - |
| १०. | साईकल | गोटा | २ | २ | १ | १ | १ | - |
| ११. | अतिथि सत्कार र मसलन्द | प्रति महिना | २५,००।- | २,०००।- | २,०००।- | १,७००।- | १,५००।- | १,०००।- |
| १२. | अङ्गरक्षक, पदिक | जना | १ | १ | - | - | - | - |
| १३. | अङ्गरक्षक प्रहरी (सहायक निरीक्षक) | जना | - | - | - | १ | - | - |
| १४. | विल्लादार गार्ड | जना | १ | १ | - | - | - | - |
| १५. | हेड प्रहरी कन्सटेवल | जना | - | - | - | १ | - | - |
| १६. | सैनिक जवान (सिपाही) | जना | १० | १० | - | - | - | - |
| १७. | प्रहरी जवान | जना | - | - | - | ४ | - | - |

नोट : स्वकीय सचिवालयका कर्मचारीहरूले शुरू स्केल अनुसारको तलवमात्र पाउनेछन ।